# डेसान

## नाटक

लेखक

युबराज मास्की राना मगर

प्रकाशक

विष्णु बुढाथोकी मास्की

# डेसान

## नाटक

लेखक

युबराज मास्की राना मगर

प्रकाशक

विष्णु बुढाथोकी मास्की

कृति : डेसान

लेखक : युवराज मास्की रानामगर

ठेगाना : खुमलटार-१५, ललितपुर

संस्करण : प्रथम (२०६९, जेष्ठ)

प्रति : एक हजार



सेटिङ तथा मुद्रण : मञ्जुश्री प्रेस, लगनखेल, ललितपुर

फोन नं. : ०१-५००४१५७

आर्थिक सहयोग : आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान,

जावलाखेल, ललितपुर

ISBN

## समर्पण

कलात्मक जीवन बांच्न र कलात्मक समाज
बनाउन प्रयास गरिरहनेहरुलाई

# कथासार

भिरकोट एउटा सुन्दर, शान्त र नमुना गाउँ हो । यो गाउँमा तथाकथित आधुनिकता र विकासको प्रवेश भई सकेको छैन । तर पनि यहाँका वासिन्दाहरु आदिम कालदेखि आफ्नो जीवन कुशलतापुर्वक यापन गरिरहेका छन् । उनीहरुको आफ्नै सामुहिक जीवन पद्धती, प्रथाजनित कानुन र मूल्य मान्यता छ । तथाकथित आधुनिकता नदेखिएता पनि त्यहा कुनै खोक्रो आडम्बर छैन । कसैले कसैप्रति कुटिल, घातक सोँच र ब्यबहार गरेको भेटिएको छैन । उनीहरुको आफ्नो परम्परागत प्रथाजनित कानुन भेजा पद्दती छ । गाउँमा कसैले कसैलाइ केही ज्यादती गरीहालेमा भेजा बैठकले दुबै पक्षको कुरा सनेर न्यायको निर्णय पनि गर्छ । गाँउमा कुनै संकट परेमा मिलिजुली समस्या सुल्झाइन्छ ।

मर्दा पर्दा एक आपसमा सहयोग गरेर गर्जो टारिने उक्त गाउँमा त्यस्तो ठूलो संकट परेको याद पनि छैन । सामुहिकताको त्यो उदाहरणिय अभ्यास हुने उक्त ठाउमा कुनै व्यक्ति अन्यायमा परेको भन्ने गुनासो कसैको पनि सुनिएको छैन ।

सुन्दर, शान्त, उदाहरणिय नमुना भिरकोटमा एउटा डेसानले प्रवेश गर्छ । अनौठो लक्षण सहितको उक्त डेसानले त्यहाँको शान्ति र सद्भाव खल्बल्याइ

# लेखकीय

संगीत तथा नाट्य प्रतिष्ठानले हेटौडामा आयोजना गरेको बहुभाषिक नाट्य महोत्सव २०६८ मा स्याङ्जाका उत्साही कला प्रेमी युवाहरु कुमार राना, मान बहादुर थापा, सचिना पुलामी, रुद्र सन्देश, लगायतका साथीहरुले २०५० सालमा प्रकाशित नाटक **मोई** मन्चन गरेपछि मलाइ दोस्रो नाटक लेख्नै पर्ने नैतिक दवाव परेको मैले महसुश गरेको हुँ। कथा र स्कृप्ट लेखन तर्फ बढी झुकाव बढेपछि नाटकका अधुरो पाण्डुलिपी सिध्याउन नसकेको, मलाइ यो नाटक लेख्नै पर्ने अझ चर्को दवाव सोही नाट्य टोलीलाइ अभिनय तालिम दिन प्रथम मगर भाषाको चलचित्रका अभिनेता राज थापा र म स्यांङ्जा गए पछि पर्‍यो । उक्त टोलीले दोस्रो नाटक मन्चन गर्ने निर्णय गर्‍यो र मलाइ फेरी स्कृप्ट लेख्ने जिम्मेवारी आयो जुन मैले नकार्न सकिन ।

भाषा, साहित्य, संस्कृति समाजको ऐना र मापदण्ड हो। कलाको विधाहरुमध्ये संगीतमा उल्लेख्य सहभागिता र दक्षता देखाएका मगर जातिको नाट्य र चलचित्र क्षेत्रमा भने कमै सहभागिता पाईन्छ । मगर जाति भित्रको विविधता सृजनाको विपयवस्तु प्राप्त गर्न मलिलो स्रोत भएता पनि सर्जकहरुको ध्यान अझै त्यता नजानुको धेरै कारणहरु हुन सक्छन् । कलालाइ अझै पनि अनुत्पादक क्षेत्र ठानिने हाम्रो जस्तो देशमा कलाकारिता गरेर बाँच्न धेरै गाह्रो पनि छ । यस्तो अवस्थामा सृजना, भौतिक संसार र व्यवहारीकतालाई कसरी सन्तुलित गर्ने भन्ने सिप, जांगर र मेहनत एउटा कलाधर्मीले लिन पर्ने आवश्यकता देखिन्छ ।

सुद्धासूद्धी हेरेर, घरको काम व्यवहारवाट मुक्ति दिएर जीवन संगिनी विष्णुलेगरेको सहयोग शब्दले मापन गर्न सकिदैन । छोराहरु असिम र आशिषले पनि मेरो लेख्ने समयमा घरमा सहज सृजनात्मक वातावरण सृजना गरेर सहयोग गरे । बाबा आमा र बहिनीहरु टिका, कमला, अम्बिका, सुष्मा र भाइ बिजयले घरायसी तनाव र बोझहरुबाट सकेसम्म टाढा राखेर, झिनामसिना कुराहरु नसुनाइ दिएर मेरो अध्ययन र सृजनामा सदैव सहयोगी बनेका छन् । सानै देखिनै मेरो अध्ययनमा दाइ जनक राना र भाउजु साबित्री देवी रानाको प्रोत्साहन र उत्प्रेरणा मेरो लागि महत्वपुर्ण पक्ष रहि आएको छ । बिशाल, दीपा, निकोल, दिलासा, लिली, धनेन्द्रको बाल सोंच र कृयाकलापहरु नयां सोंच, उमंग, उत्साह र प्रेरणाका स्रोत हुन् । द्रव्यलाभ विनाको उल्टो लगानी गर्नु पर्ने मेरो कला प्रतिको लगाव र लगानीलाई परिवारले मौन सहन गरेको बोध मलाइ छ तर यसको गुण कसरी तिर्ने र तिर्न सक्छु कि सक्दिन, यो कुरा मलाइ थाहा छैन । हाम्रो समाज सृजनाको उर्वर थलो हो र वनाउनु पर्छ भन्ने मलाई लाग्दछ ।

राज थापा र म **लंघन** निर्माण काल देखी नै बेला बेलामा कला सम्बन्धी बैठक, छलफल, बहस, तालिम गरी राख्छौं । यो रचना पनि हाम्रो बहसको अर्को उपज हो । हाम्रा मूर्त रुप लिन नसकेका धैरै परिकल्पनाहरुले आगामी दिनहरुमा रचनारुपी आकार लिउन् भन्ने मेरो इच्छा छ ।

डा. लाल स्याकुरेल रापचाजीले अविलम्व छपाउन नैतिक दवाव दिनु भएकाले पनि यो पुस्तक यहांको हातसम्म पुग्न सकेको हो ।

सृजना गर्न मलाई उत्प्रेरित गर्ने हौस्याउने, झस्काउने, घोंच्ने मित्रहरु प्रल्हाद कार्की (हाकिम), भिम राना, मेजन पुन, केशव सूर्यवंशी, मान बहादर थापा हर्क आले, कासीम राना, नरु श्रीस, प्रतिमाया पुन, किरन मल्ल, दुर्गा ठाडा थापा अशोक थापा, पुर्ण राना सदैव धन्यवादका पात्रहरु हुन् ।

# पात्रहरू:

| | | |
|---|---|---|
| बाजे | - | मानसिंह, ७५, वृद्ध, सहयोगी व्यक्ति |
| बजै | - | खगीसरा , ७०, गृहिणी |
| बाबु | - | जयसिंह ,४२, मुखिया |
| आमा | - | उजेली , ३८, गृहिणी |
| छोरा | - | नामखान, १८, १२ पास गरेको युवा |
| छोरी | - | टूगा , १६, एस. एल. सी. दिन तयार युवती |
| गाउँलेहरु | - | दलसुर , ४८, भु. पु. सुबेदार, ठट्यौला व्यक्ति, |
| | - | हैमती , ५५, युवा छोरो गुमाएकी आमा |
| | - | वीरमान , ३०, झोंकी, साहसी व्यक्ति, खाडी रोजगार |
| | - | सन्तवीर , ४०, गाँउको उद्यमी, नया काम गरीरहने |
| | - | डिलसरा , ३८, पुलिस छोरो गुमाएकी आमा |
| | - | पूजारी, ४५, धार्मिक र सहयोगी व्यक्ति |
| | - | सुऱ्या , २२, एक सुरे, ठट्यौलो व्यक्ति |
| | - | नामखानका साथीहरु, १६-१८ |
| | - | टूगाका साथीहरु १५-१७ |
| | - | फेरीवाल |

# अंश १

## दृश्य १

समय : दिउसो ।

स्थान : घर ।

पात्रहरु : सबै गाउँलेहरु ।

*(बाजेले पुजाको सामान घर भित्रबाट बाहिर ल्याउछन् । बजै, जयसिं उजेली, नामखान्, टूगाले पनि पूजाको थप सामानहरु ल्याउछन् । सन्तवीर, बी मान, सुऱ्या र गाउँका अरु मानिसहरु हातमा एक एक सामान लिएर एक पि अर्को गर्दै आउछन् । आफूभन्दा ठूलालाई ढोग गर्छन् । ठूलाहरुले सानाहरुला आशिर्वाद दिन्छन् र सोधपुछ गर्छन् । खाली ठाउँमा मिलेर बस्छन् । बाजे धू अक्षताको भाँडा झुण्ड्याएर बिचमा जान्छन् र पूजा गर्छन् । )*

वाजे : सम्पूर्ण कुल पितृ देवहरु । आठै दिशा, आकाश, पाताल, धर्तीका सिमेभू
देवी देवताहरु । हामी सबैलाई रक्षा गर्नुहोस्, आशिर्वाद दिनुहोस् ।
हामी सबैको सोँच बनाउने र जोगाउनु होस् ।
राम्रो काममा बुद्धि जाओस् । एक आपसमा सहयोग बढोस् ।
सबैको भलो होस् ।
कसैको आपसमा वैरभाव भएमा आजबाट समाप्तं होस् ।
न्यानो र सुमधुर सम्वन्ध बनोस् ।
गाउँने नाच्नेको ज्ञान आओस् ।

हाम्रो प्रणाम स्विकार्नोस् ।

गल्ती भएमा अज्ञानी सम्भी माफ गर्नोस् ॥

*(पुजारी तर्फ हेर्दै)* ल पुजारी सबैलाइ टिका लगाइदेउ ।

*(सबैलाई अक्षता छर्कन्छन् । गुरुबालाई टिका लगाईदिएर मादल ढोग्छन् । पुजारीले नाच्ने र गाउँनेहरुलाई टिका लगाईदिदैं जान्छन् । सोरठी संगीत र नृत्य शुरु हुन्छ ।)*

गीत

पुरिवै दिशाको जैसिङे राजै

पश्चिमै दिशा चलैला

पश्चिमै दिशाको हैमति रानी

पुरिवै दिशा चलैला

जैसिङे राजा र हैमति रानी वृन्दा बनैमा भेट भयो

नृत्य करिव ३ मिनेटमा अन्त्य हुन्छ ।

सुऱ्या र वीरमानले ठट्यौली अभिनय गर्दै हसांउछन् ।

बाजे : ल बाबु नानी हो ! जानु अगाडी चिया पिएर जाने हो । आउने दिनको नाँचबारे मुखियाले बताउलान् । दिन कुन राम्रो छ पुजारीले हेर्लान् ।

जयसिंह : सबैलाइ धन्यबाद छ । अब अर्को चरणको नाँच बजाडी ठूलाकहाँ तेस्रो चरणको ओल्याङडी मुखियाकोमा हुनेछ । अब चियापानी गरौं ।

वीरमान : *(हैमतिको नजिक जाँदैं)* फुपू मैले रोपाँइमा गल्ती गरैं मलाइ माफ गर्नु होला । अलि नशामा पनि थिँए । मेरो गल्ती भयो फुपू ।

हैमति : *(अकमकिएर उसलाइ हेर्छिन्, बोल्न सक्दिनन्)*

वीरमान : जे भयो त्यो बिर्सीदिनु होला, एउटा नमिठो सपना सम्झेर बिर्सीदिनु होला ।

हैमति : भै गयो, कहिलेकाही त्यस्तै हुन्छ, मैले पनि केही बढी बोलेको भए माफ गर्दे ।

बीरमान : हजुरको केही गल्ती छैन फुपू, गल्ती त मैले नै शुरु गरेको हुं ।

*(सबैजना एकआपसमा मुखामूख गर्छन् ।)*

सन्तबीर: ल अरु कसैको कसैसंग केही छ की ? बांकी नराख्नु । आजको दिन तितोलाइ मिठो पार्ने दिन पनि हो । यदि केही छैन भने अब *(मुखिया तर्फ हेर्दै)* छर्लट्टिनु अगाडी केही छ की मुखिया?

जयसिंह : हजुर हरु सबैलाइ धन्यबाद । संस्कृती निरन्तरताको यो पुण्य अभियान निरन्तर भइरहोस्, आफ्नो खेतीबारी स्याहार्न तिर लाग्नु पऱ्यो । खेती स्याहार्न बिशेष गरी मान्छे कम हुनेको घरमा सहयोग गर्न सबैले एक दुई दिन समय दिनु होला । त्यसपछि बर्ष भरीको दुख बिसाउने ओहोराको आयोजना हुनेछ अरु केहि अत्यावश्यक निर्माण कार्यहरु गर्नु पर्ने छ । भेजाबैठकमा सल्लाह गरौला ।

सन्तवीर: लौ त अहिलेलाइ बिदाबादी गरौं ।

*(सबैजना सलबलाउन थाल्छन् । मञ्चमा अध्यारो छाउँछ ।)*

# दृश्य २

समय : दिउसो ।

स्थान : चौतारी ।

पात्रहरु : सन्तबीर, सुऱ्या र बीरमान ।

*(सुऱ्या मन्चमा आउँछ ।)*

सुऱ्या : *(सोरठीको भाकामा)* हा हो हो ओ ओ ओ..... यस पटक त मेरो काम पक्का हुने भयो, यस पटक पक्का हुने भयो । हा हो हो ओ ओ ओ..... पोहोर साल हुनसकेन अहिले त पक्का हुनेभो ।

सन्तवीर : के हुने भो सुऱ्या ?

सुऱ्या : *(अलि हडवडाउदै)* ला खत्तम ! काम हुनेभो भेना मेरो काम फत्ते हुनेभो ?

सन्तवीर : ल ल साला वावु के काम हो कुन्नी फत्ते गर्नु पर्छ है, पहिला हाम्रो धान स्याहार्ने काम फत्ते गरौ क्यारे त्यस पछि अरु काम गरौला ।

सुऱ्या : के गर्नु भेना, वावा सानैमा छाडेर गइहाले, आमा पनि अलि कमजोर छन् ।

सन्तवीर : ए कुरो त्यसो पो । *(गिज्याउने शैलीमा)* ल ल ।

सुऱ्या : भेना पनि ।

सन्तवीर : मैले त पोहोर साल पनि भनेकै हुं नि सालावावु ।

सन्तवीर : आँटे पुग्छ सालाजी हामी छौं नि ! सबैको त्यस्तै हो ।

*(वीरमान त्यहाँ आउँछन् ।)*

वीरगान : दाई फोर्लाङ्ग ! के सबैको त्यस्तै होला ?

सन्तवीर : फोर्लाङ भाई ।

बीरमान : सुऱ्या पनि यही रहेछ ।

सुऱ्या : फोरीङ दाई !

बीरमान : सुऱ्या म तलाइ नै खोज्दै हिडेको ।

सुऱ्या : किन होला दाई?

सन्तबीर : पारी बनमा एउटा गोठ बनाउ कि भनेको, रुख ढाल्न जानु पऱ्यो भा
कहिले भ्याउछस् ?

सुऱ्या : आऽ दाई त्यती टाढा बनमा किन बनाउनु पऱ्यो र ? घरकोले पुगिहाल
नी । फेरी को गइरहने हो र त्यहांसम्म डिँगाको हेरबिचार गर्न ।

बीरमान : घाँसपात धेरै उता छ त्यसैले गर्दा केही डिंगा त्यतै राख्न पर्ला
भनेर ।

सुऱ्या : ला खत्तम ! बाघले घरबाटै बाच्छा बाच्छी र सुंगुर उठाएर लगिरहेको
बनमा गोठ राख्यो भने त झन् बस्तुको त नाशै हुने होला नी ।

वीरमान : खै पहिला पनि थियो नि गोठ त, पछि बस्तु राख्न छाडे पछि पो ग
भत्क्यो ।

सन्तवीर : पहिला त गोठमा गएर वस्तुको स्याहार सुसार मैलें पनि गरेकै हो प
काम गर्ने मान्छे कम हुदै गए पछि गोठ राख्न छाडेको हो ।

वीरमान : के गर्नु दाइ म पनि एक पटक विदेश जाउ भन्ने लाग्यो र विदेश ति
लागियो । घरमा बाबा आमा बुढा बुढी र कमजोर भए, टाढा

खेतबारीमा खेती गर्न गाह्रो भयो । त्यसपछि खेती पनि कम थाल्यो । ...क्या । माँड

सन्तवीर : हो भाइ, केटाकेटीहरुले पढ्ने लेख्ने गर्नैपर्‍यो । हाम्रो पालामा त प... लेख्ने स्कूल नै थिएन । सानै देखि डिँगावस्तु र खेतीको काम गर्नु पर्ने । ल ल भाइ आँटे पछि पुग्छ । भाइले त्यहाँ बनाए पछि अरु पनि आउने बढ्छन् । अनि मेरो पनि बनाउनु पर्ला ।

वीरमान : हुन्छ मिलाएर काम गरौं न त ।

सुन्या : हैन दाइले त नचरीमा हैमती फुपूलाइ अक्क न वक्क पार्‍यौ नि दाई ?

वीरमान : के गर्नु, आफ्नो गल्ती थियो । त्यो समय माफी माग्ने उत्तम समय जस्तो लाग्यो ।

सन्तवीर : भाईले एकदम ठिक गर्‍यौ । घमण्डले कसैको भलो गर्दैन । घमण्डले गर्दा नै संसारका कत्रा कत्रा सभ्यता भत्केर गएका छन् । पानी जस्तै सरल र भूमी जस्तै सहनशील हुन सकेमा सबैभन्दा त्यही बलियो र दिगो हुने रहेछ ।

वीरमान : नशापानी खाने बानीले धेरै बिगारेको छ, अब त्यो पनि छोडिदिन्छु दाई ।

सन्तवीर : आफुले त्यसलाइ खान पर्‍यो के भाइ त्यसले आफैलाई खान दिनु हुदैन ।

सुन्या : हुन त हो तर अगाडी आए पछि मन थाम्न गाह्रो छ क्या ।

वीरमान : सकिन्छ किन नसक्नु ? मन नै त हो ।

सन्तवीर : हो आंटे पछि नसक्ने त कुरा आउदैन । ल जाउ भो अहिले ।

वीरमान र सुन्या : ल जाऔं ।

उनीहरु त्यहाँबाट हिड्छन् ।

# दृश्य ३

समय : अपरान्ह,

स्थान : बाजेको घर

पात्रहरु : मानसिंह, जयसिंह, जयसिंह, उजेली, नामखान, टुगा ।

(पिढीमा बाजे लुगा सियो धागोले सिइरहेका छन् । उक्त लुगालाई बडो सावधानी पूर्वक तलमाथी हेर्दै उनले सिउदै छन् । एक पाटो सिध्याएर कपडा हेर्छन् । कपडा अलिक पुरानो छ, सोरठी नाँचमा मारुनीले लगाउने भेषभूषा रहेछ । बजै बाहिरबाट डालोमा केही लिएर आउँछिन र पिंढीमा डालो राख्छिन् । बुढालाई हेर्छिन् बुढा भने आफ्नै काममा व्यस्त देखिन्छन् ।)

बजै : अझै सिद्धिएन? के गर्दै हो बुढा अहिलेसम्म ? गर्नु पर्ने काम नगरेर के गरि रहेको कुन्नी ?

(बुढीको कुराले बुढालाई केहि पनि असर गर्दैन उनी अझै काम गरिरहन्छन् ।)

सुन्यौ बुढा ? बाजेबजै पुजाको लागि सरसामानहरु तयारी भयो ?

(बुढाले बुढी तर्फ हेर्छन् कपडा देखाउदै मुस्काउछन् बुढीले अपेक्षाको भावले अर्को तिर टाउको फर्काउछिन् ।)

बुढा : के भन्यौ रे बुढी ? (बुढीले आखा तरेर हेर्छिन् ।) ए सरसामान ?

वुढा : छोरालाई भनेको छु । बीरमान पनि आएको थियो जैसिंह र बीरमान भएर व्यवस्था गर्लान् ।

वजै : धजा, धुप अक्षताहरु त मिलाएर राखे सजिलो हुन्थ्यो नि । म जाँदा पनि त्यहि थियौ अहिले सम्म के गरिरहेको हो ।

बाजे : गर्छु, गर्छु ।

*(बुढाले सामान पोको पार्न थाल्छन्, बुढीले डालो समातेर भित्र जान खोज्छीन त्यहि बेला उनका छोरा जयसिंह घरमा आउँछन् आफूले बोकेको सानो झोला पिढीमा राखेर बस्छन् ।)*

बाजे : ए ! आईस् ? पूजाको व्यवस्था भयो त ?

जयसिंह : हुन त भयो तर खै सबैजना कामको चापमा छन् कोही तराई जानु पर्ने रे ।

बाजे : गाउँमा जति छन् उनीहरुले पूजा गरे हुन्छ नी । घरमा परिवार छन् उनीहरुले धुप अक्षता भेटी मिसाए हुन्छ ।

जयसिंह : त्यसै गर्नु पर्ला । उजेली खै त मोई ?

मोइ : खेत पुगेर आउछु भनेर गाथ्यो ।

*(जयसिंह आफ्नो झोलाको रजिस्टर झिकेर पल्टाएर हेर्न थाल्छन् ।)*

वाजे : यस पटक भेजा वैठकमा गाउँको आकाश पानी ट्यांकी निर्माणको पनि कुरा गर्न पर्‍यो गाईवस्तुलाई खडेरी पर्दा पानीको समस्या छ ।

जयसिंह : पहिला पनि यो कुरा निर्णय त भएको हो तर कार्यान्वयन हुन सके
जिल्ला विकास समिति, एडिबिबाट पनि सहयोग पाईने आश्वासन
प्राप्त भएकै हो । हामीहरुले नै ताकेता लाउन सकेनौ ।

बुढा : यो चाँहि अत्यावश्यक नै भयो अब पहिला जस्तो मूल पानी पनि
भएको पनि सुकेर मान्छेलाई नै नपुग्ने हो की जस्तो भैराछ डिंगा
गाह्रे भो ।

*(एकजना महिला आउछिन् उनको हिडाईबाट काम गरेर आएको थाक
स्पष्ट देखिन्छ । उनी पिढीमा बस्छिन् ।)*

उजेली : खेतमा आलु लगाउने बेला हुन थाल्यो । पोहोर साल आलु राम्रो फले
थियो दुम्सीले केही राखेन, अहिले पनि त्यस्तै गर्ने त होला ।

जयसिंह : अँ दुम्सीको बगाल त निकै बढेको छ जस्तो छ हाम्रो मात्रै कहाँ हो
सबैको खाएर खतम पारेको छ ।

बुढा : खै बारुद पनि भएन मैले त्यसलाई कुरेर ठिक पार्ने थिए । केटाह
यसो पिछा गरे त हुन्थ्यो नि कोही गर्दैनन् । साँचो पनि बिग्रीएको
एउटा नयाँ साँचो नबनाई भएन । वर्ष भरी खाने तरकारी खतम पा
भने त हामीलाई त साह्रै गाह्रो हुने भो ।

*(एकजना युवती हातमा किताब च्यापेर आउँछिन् ।)*

टुगा : मोई !

उजेली : *(उजेलीले टुगालाई हेर्छिन्)* आज किन ढिलो ?

टूगा : क्लास सकेर खुरुखुरु आएको हो, क्लास अलि लामो भयो क्या । मोड भोक लाग्यो ।

बजै : मेवा राखिदिएको छु, खांदै गर ।

टूगा : अरु केहि छैन ?

बजै : एकैछिन पर्खी, म तयार गरिहाल्छु ।

टूगा : बाबा अब हाम्रो स्कूलमा पढाई सिद्धियो । अव फाईनलको तयारी गर्न छ । फाईनल अगाडी एक-पटक लुम्बिनी चितवन घुम्न जाने भनेको छन् । म पनि जान्छु है ?

जयसिंह : के भन्छ, जाँच नजिक आईसक्यो, के-को भ्रमण हो ? पोहोर साल ९ कक्षामा पनि त गएको हो ।

टूगा : नौ कक्षामा त पोखरा, मनकामना काठमाण्डौं, ईलाम मात्रै गएको हो । लुम्बिनी र चितवन गएको छैन् ।

जयसिंह : जाँच अघि घुमेर विषय वस्तुमा ध्यान रहदैन । विषयवस्तुमा ध्यान केन्द्रित गर्न नसके परीक्षाफल राम्रो हुदैन । जाँच पछि गए त भइहाल्यो ।

टूगा : हाम्रो जाँचको विषय वस्तु पनि हो के बाबा, बुद्धको जन्मस्थान, सम्राट अशोकको नेपाल आगमन चुरे र महाभारत पहाडको जैविक विविधता, तराईको उर्वरता, सिमसार, वन, नेपालमा जङ्गली जनावरको अवस्था र संख्या सबै हाम्रो विषय वस्तुमा पर्छ के बाबा ।

जयसिंह : ल भैगो मलाइ नसिका ! समय अनुसार कामगऱ्यो भने पो सफलता पाईन्छ । जाँच नजिक आइरहेको बेलामा के को भ्रमण होला । के हो ! के हो !!

उजेली : सवैजना जाने भनेको छ ?

टूगा : जान्छ, सवैजना ।

*(उजेलीले जयसिंह तिर हेर्छन्, जान दिएँ भैगो नि भन्ने भावनामा ।)*

जयसिंह : हैन अस्ति स्कूल सञ्चालक समितिका बैठकमा त यो कुरा के
निस्केको थिएन । कसरी अहिले अचानक यो कुरा उठ्यो । कस
उठाएको हो यो कुरा ?

उजेली : घुमघामको लागि के हतार छ ? पहिला पढाई राम्रो गर्‍यो भने त प
पनि त घुम्न पाईन्छ ।

बजै : सबैजाने भए जान दिए भैगो नि ।

जयसिंह : ल त अहिले आफ्नो काममा लाग म हेड्मास्टरसँग सल्ल
गरौँला ।

*(एउटा युवक दौडदै आइपुग्छ । श्वास फुलीरहेको कम गर्ने प्रयास ग
सबैजनाले उसलाई हेर्छन् ।)*

जयसिंह : दिनभरि कहाँ थिईस ? भेजा बैठक हुदैछ । निम्तो बाड्नु छ, ख
दुरुस्त गर्न तेरो सहयोग चाहिएको छ ।

नामखान : भलिवल म्याच थियो बाबा ।

जयसिंह : फिजिकल एक्सरसाईज भई रहेको छ ?

नामखान : छ, तर अहिले भलिवल म्याच भईरहेकोले अलिक कम भईरहेको छ। बाबा जिल्ला स्तरीय प्रतियोगिताको लागि एउटा भलिबल टिम निर्माण गर्नु पर्ने भएको छ।

जयसिंह : पहिला कलेजको पढाईको लगि तयारी गर।

नामखान : रिजल्ट आएपछि त म भर्ना हुने तिर लागिहाल्छु।

बाजे : बल गर है नामखान यसपटक ब्रिटिश आर्मीमा भर्ति हुनुपर्छ। पोहोर साल नै हुन्थीस्, अल्छी गरिस्।

नामखान : म सबै टेस्टमा पहिलो भा थे उनीहरुले नै लिएनन्। फिजिकलले मात्र हुदैन क्या बाजे आजकल।

बाज : किन नहुने ?

नामखान : खै कुन्नी ?

बाजे : हाम्रो पालामा त गल्लाले फकाएर, पैसा दिएर, खुवाएर कपडा दिएर, घरमा खवर नगर है भनी सम्भाउथे। बा-आमाले थाहा पाए भने जान दिन्नथे। तर अहिले त ठ्याक्कै उल्तो भयो।

जयसिंह : पढाई चाँहि नछाड् है ? सिक्ने प्रकृया कहिल्यै बन्द गर्नुहुदैन। एउटै सिपले सधै भरी काम नगर्न सक्छ त्यसैले सिप र ज्ञान समय अनुसार बढाउदै लग्नु पर्छ।

वजै : के तरकारी पकाऊ आज ?

उजेली : टुसा पकाउनु फूपू आज।

वजै : टुसा त मलाई त्यति राम्रोसँग बनाउन आउँदैन् तिमी पकाऊ, कालो दाल पनि निकाली दिएको छु।

उजेली : नामखान ! भोली मामा घर जा । घ्यू र तामा लगिदे । आउँदा मह लि...

आईज ।

नामखान : टूगालाई पठाउनु न ।

उजेली : उसको जाँच नजिक आइरहेको छ ।

नामखन : हाऽऽऽ मेरो काम छ के ममी ।

उजेली : तेरो काम भन्दा यो काम जरुरी छ ।

टूगा : ममी मलाई थाहा छ यो किन जान नखोजेको ।

नामखान : के थाहा छ तलाई ?

टूगा : यसको सालीले यसलाई मन पराउँछ के ममी ।

नामखान : चुपलाग, जे पायो त्यहि बोल्छ ।

टूगा : साच्ची हो के मोई ! हो कि होईन भन त !

नामखान : हाऽऽऽ के-के बर्बराई रहन्छ "ए भेना आउनु भएछ ।" "आज य... बस्नुस है भेना"? "के भयो भेनालाई ?" के-के भनि बस्छ मलाई त ज... मन लाग्दैन ।

टूगा : देख्नु भो मोई ।

बाजे : सालीले नगिज्याएर कसले गिज्याउँछ त ? 'गुन्द्रुक पकाउनु पर्दै... साली फकाउनु पर्दैन' ।

नामखान : बाजेले जहिले पनि त्यसै भन्नुहुन्छ ।

*(जयसिंह र नामखानको बाहेक सबैको अनुहारमा मुस्कान देखिन्छ ।)*

जयसिंह : माईज्यूले त झन् अब साली लग्ने बेला भऱ्यो नी भान्जा भन्नु हुन्छ...

*(सबैजना हाँस्छन् । जयसिंह पनि मुस्काउछन् ।)*

उजेली : हुन दे त ! के भो त ।

जयसिंह : ल भरे पुजारी बोइ दलसुर दाई र वीरमान ठूलो नाँचको लागि सल्लाह गर्न आउँदै छन् । नामखान तैले खानपान व्यवस्थापन गर त ।

नामखान : मेरो त भलिबल छ के बाबा भ्याउदिन ।

जयसिंह : वर्षको एक पटक गर्ने आफ्नो संस्कृति हो सहयोग त गर्नु पऱ्यो नि ।

नामखान : पोहोर पनि त मैले नै गरेको हो । अरु कोही आउँदैन ।

जयसिंह : अरुको आ-आफ्नै काम छ, ल भान्सा तिर लाग अब भरे फेरी हतार हुन्छ ।

नामखान : अब ठूलो नाँच नगरे पनि हुन्छ । धेरै आधुनिक नाँचहरु आईसक्यो ।

जयसिंह : जति आधुनिक भएपनि यो संस्कृतिमा हाम्रो जीवन छ, सभ्यता छ, सुखदु:खको कथा छ । यो नाँच मात्र होईन हाम्रो नीतिकथा हो, शिक्षा हो ।

*(सबैजना उठेर हिड्न खोज्छन् । नामखानले टूगाको कपाल तान्न खोज्छ ।)*

टूगा *(चिच्याउँदै)*: बाबा !

*(नामखान् त्यहाँबाट हिड्छ, मञ्चमा अध्यारो छाउँछ, सोरठी संगीत गुञ्जन थाल्छ ।)*

# दृश्य-४

समय : अपरान्ह

स्थान : चौपारी

पात्रहरु : दलसुर, हैमति, पुजारी, सुन्या

*(दलसुर बसिरहेका छन् सानो रेडियो मिलाएर सुन्दै छन् । एकजना महिला आउँछिन् ।)*

हैमति : पुसाई ङा भ्फोर्लाङ जाट्ले पुसाई ।

*(हैमतिले मजेत्रो टाउँकोमा राखेर ढोग गर्छिन ।)*

दलसुर : आशिर्वाद छ ! सबै सञ्चै छौं ?

हैमति : सञ्चै पुसाई, हजुरहरुलाई कस्तो छ ?

दलसुर : सञ्चै छौं यता पनि । म पनि आउन भ्याएको छैन । भैंसी ब्यायो कि ब्याएन ।

हैमति : ब्याई सक्यो पुसाई ।

दलसुर : अच्छा ! दुध राम्रै दिईरहेको छ ? घ्यू कत्तिको लागेको छ ?

हैमति : दुध त राम्रै दिईरहेको छ तर घ्यू भने त्यति लागेको छैन खै अन्न नपुगेर हो की ?

दलसुर : लाग्ला अलिक अन्नको कुँडो खुवाउनु पऱ्यो ।

हैमति : हजुर पुसाई ! अब जाने हैन र पुसाई ?

दलसुर : एकछिन थकाई मारुँ कि भनेर सन्तवीर र वीरमान पनि आउँदै होलान् । गोलीगांठा फेरी दुख्न थालेको छ । हिड्न अलि गाह्रो भैराछ । पल्टनमा धेरै उफ्रने कुद्ने गरेर होला जोर्नीहरु दुख्छ । डाक्टरले हान्, रातो मासु, छाला भएको मासु नखानु भन्थ्यो आफूलाई त्यस्तै चाँहिने त्यसैले पनि झन गाह्रो भईराखेको छ ।

हैमति : बार्नु भनेको चिज त बार्नैं पर्ने रहेछ पुसाई । आफ्नो शरीरले के सहदैन त्यो त आफैले विचार गर्नु पर्छ ।

दलसुर : हो नानी ! पहिला त केको रोजेर खान पाईन्थ्यो र जे अगाडि छ त्यहि खानु पर्थ्यो । बल हुन्जेल त सबै पच्थ्यो, उमेर ढल्दै गए पछि त गाह्रो पो हुदो रहेछ ।

हैमति : म हिड्दै गर्छु है पुसाई ?

दलसुर : सँगै जाउँला भाउजु ।

*(वीरमान एक जना मान्छे आउँछन् ।)*

वीरमान: दर्शन गरे जेठु *(ढोग गर्छन्)*

दलसुर : दर्शन ज्वाई ! एक्लै हो ?

वीरमान: एक्लै जेठु ! गोठ बनाउनु पर्ने, पारी पाखा बनेमा दलिनको काठ छ कि भनेर रुख हेर्न गएको । त्यतैबाट आउँदै छु ।

दलसुर : अच्छा ! पल्टनमा हुँदा चासो कमै हुन्थ्यो एउटा सानो दलिन त म सँग पनि छ मैले पनि पारीवनमा एउटा गोठ बनाउ भनेको खै के-के

मिल्दैन । एक पटक हेर्नुहोस् न मिल्छ भने त्यहि चलाए पनि हुन्छ मला
पछि बनाइदिए हुन्छ ।

वीरमान: हेरौला जेठु !

हैमति : सुन्दरका बा छुट्टि आए भने हाम्रो पनि वनाउनु पर्ने हो यै हिउँदमा
काठपात पनि पुग्दैन होला । छोरो हराएको पनि १० वर्ष भयो अतो फ
केहि छैन । त्यतिका खोजी नीति गरियो केहि पत्ता लागेन ।

बीरमान : के गर्नु भाउजू ! त्यति बेला उसलाई रोकन सकिएन । ऊ भित्रभि
हिड्ने तयारी गरिसकेको रहेछ । मैले पनि उसको बारेमा धेरै ठाउँ
खोजीनीति गरे । जिल्ला, क्षेत्रिय नेताहरु पनि भेटे खै केहि पत्तै लगाउ
सकिएन ।

दलसुर : हुनेहार दैव.न टार । कहिले काँही नसोचेको भोग्नु पर्छ । पल्टनमा छ
कति चोटी म पनि दुस्मनसँग आमनेसामने भए त्यस्तो बेला कि
आफूले मार्नु पर्छ हैन भने उसले आफूलाई मार्छ ।

हैमति : सास बाँकी छ कि लास भैसक्यो त्यति मात्र थाहा पाउन पाएँ एक म
हुने थियो ।

*(सन्नाटा छाउँछ । २ जना मानिसहरु अरु आउँछन् ।)*

वीरमान : पुजारी बा झोरीङ ?

पुजारी वोई : आशिर्वाद वावु !

दलसुर : झोरीङ डाजे !

पुजारी : आशिर्वाद !

सुन्या : झोर्ले पजारी बोई ! लाऽऽऽ म त खत्तम !

पुजारी : आशिर्वाद छ !

पुजारी बोई : हामी त कोटमा भूल्यौ एकछिन । रङ्ग रोगन र वरपर पर्खाल मर्मत नगरी नहुने छ बाबु यसपटक त्यो सल्लाह पनि गर्नुछ ।

बीरमान : बलिया बाङ्गा सबै विदेश गाउँमा बुढाबुढी र केटाकेटी मात्रै । केही काम गर्न पनि मान्छे नै नपाईने गाह्रो पो भयो गाउँमा जीवन धान्न त ।

सुर्या : लाऽऽऽ म त खत्तम !

दलसुर : आफ्नो ठाउँमा पौरख गरेर सुन फलाउन संकेत राम्रो हुन्थ्यो । ठाउँ त हाम्रो नराम्रो छैन नी । आफु पनि एकपटक देश हेर्नु पर्छ भनेर पल्टन तिर लागियो ।

पुजारी बोई : पहिलो त गाउँमा विकासको योजना नै पर्दैन परिहाल्यो भने योजना अनरुप काम सक्न गाह्रो । समूहगत काम गर्ने हाम्रो बानीलाइ अझै विकास गर्नु पर्छ । 'एक थुकी सुकी, हजार थुकी नदी भन्ने हामीले लागू गर्न सकेका छैनौ ।

बीरमान : काष्ठकला मुर्तिकला, थाङका, मन्दिर र घर बनाउने सीप र शैलीमा हामी राम्रै हौं अहिले आएर खै सीपविहिन, कलाविहिन र शिक्षाविहिन जस्तो पो भयौं ।

दलसुर : भविष्य सम्म सोचेर योजना बनाउने, कार्यान्वयन गर्ने पक्षमा हामी कमजोर भयौं ।

पुजारी बोई : हो ! सभ्यता भन्ने चिज पनि रोटे पिङ जस्तै हुदो रहेछ । कला, सँस्कृति र असल सभ्यताको निर्माण गरिसके पछि पनि हामी अहिले

अविकसित र परनिर्भर भएका छौ । हाम्रा राम्रा चिजको उपयोग गर्न सकेका छैनौ । हाम्रा अमूल्य स्रोतहरु, पर्यटन, जलस्रोत जस्ता संभावनाहरु प्रयोग गर्न सकेका छैनौं । सात साल अगाडिसम्म पनि विदेशी ऋण एक पैसा थिएन सबै बांचेकै थिए ।

बीरमान : आफ्नो स्रोतको पूर्ण उपयोग गर्न त लगानी पनि गर्न सक्नु पर्यो ।

पुजारी बोई : असल सोंच र प्रवृति र दृढ निश्चय भएमा लगानी जुटिहाल्छ नि

बीरमान : मुक्क्षेत्रमा पानीमाथि बत्ति बल्ने त सुनको ग्याँस हो रे दाइ ।

पुजारी बोई : खानीको त बिशाल स्रोत छ रे नि हाम्रोमा ।

बीरमान : त्यसको उपयोग गर्न सकेमा हाम्रो जीवनस्तर कति माथि जान्थ्यो होला हगी ?

सुऱ्या : लाऽऽऽ खत्तम ! लाहुर जानै किन मरिहत्ये गर्न पर्थ्यो होला र त्यस पछि ।

दलसुर : धेरै राम्रो हुने थियो नि । म पनि त कहा रहरले गएको हो र? भागेर गएको ह । फेरी गुरुजीको गाली त केटा हो कुरै नगर, सहन गाह्रै पर्ने हुन्छ त सुऱ्या ! हैन हामी त गफको सुरमा धेरै भूल्यौ त जाऔं अब ।

*(सबैंजना उठेर हिड्छन् मञ्चमा विस्तारै बत्ति निस्दै जान्छ सोरठी संगीत फेरी दोहोरिन्छ ।)*

# दृश्य-५

समय : दिउँसो

स्थान : चौपारी

पात्रहरु : नामखान र उसका साथीहरु

*(नामखान दौडेर आउँछ । उसको श्वास बढिरहेको छ । पुशअप गर्न थाल्छ । साथी १ पनि दौडेर आउँछ । उसको पनि श्वास बढिरहेको छ अगाडि झुकेर ठुलो ठुलो श्वास फेर्छ । साथी ३ पनि दौडेर आउँछ । पुशअप गर्न थाल्छन् । उठेर शारिरिक अभ्यास टुङ्याउने ढिलो अभ्यास गर्छन् ।)*

साथी १: (नामखान तिर हेर्दै) तेरो फिटनेस त निकै राम्रो भएको छ ।

साथी २: त पक्कै भर्ति हुन्छस् यसपटक ।

नामखान: तिमीहरुको पनि त कम छैन ।

साथी १ : खै फिटनेस मात्र भएर नहुदो रैछ । त्यो सम्मरे कसरी भयो पोहोर साल

साथी २ : के हो के हो यार ! ब्रिटिश नभए इडियन आर्मी जिन्दाबाद पीर नगर ।

साथी १ : इडियन आर्मीमा पनि त भ्याकेन्सी घटाएको छ ।

नामखान : त्यो करा छाड् यस पटक हाम्रो टिमले भलिबल म्याच जित्नुपर्छ ।

साथी १: त्यो पिरै नगर पक्कै जितिन्छ ।

नामखान : त्यसै भने पोहोर साल हार्‍यौ ।

साथी २ : त्यो त त्यैं सम्मरेले गर्दा हो नि यार ।

थोरै भयो, डिफेन्सले मात्र त ...

*(त्यही बेला सुर्‍या पनि त्यहाँ आउँछ ।)*

सुऱ्या : तिमीहरु त कति छिटो आएछौ यार म पनि गल्ला देखिन जाने ... बिहानै एक्सरसाइज गर्न आउछु भनेको गोठमा भैसीसँग बारीमा घाँसको भारीसँग एक्सरसाइज गर्दा ठिकै भयो यार । *(हाँसो)*

साथी १ : तिमी त हल्दार पेन्सन पकाएर आएको भनेको हैन त दाई ?

सुऱ्या : त्यो त इँडिया को हो क्या एउटा बृटिशको पनि त चाहियो । ...

साथी १ : ए ठिक हो, तिमी त भै हाल्छौ नि ।

साथी २ : हो दाई तिमी त भै हाल्छौ नि । *(हांसो)*

काले तैले कसलाई बिहे गर्छस्? नामखानलाइ त मोचाबारी चन्द्राले पराउछे ।

साथी १ : उसको त आफ्नै साली छ नी ।

नामखान : हाऽऽऽ तिमीहरु फेरी नचाहिने करा गर्न थाल्यौ ।

साथी २ : के को नचाहिने यो त झन् चाहिने करा हो नी । योजना बनाइ भविष्यलाइ सजिलो हुन्छ नि केटा ।

सुऱ्या : तिमीहरु भर्ति भएर देखाउ न मैले तिमीहरुले रोजेको केटीहरु गराईदिन्छु तिमीहरुले कुनै पीर गर्नु पर्दैन । तिमीहरु सबको लोक... भए त भयो ?

साथी १ : हो मैले खुब पत्याए ।

सुन्या : हो भनेको ।

साथी १ : हो हो ।

नामखान : छाड केटा हो यस्तो कुरा जाउँ अहिले । सुन्या दाइ तिमी कता?

सुन्या : म पनि घरतिर जाने हो ।

*(सबैजना त्यहाबाट हिड्न थाल्छन् । मन्चमा अध्याँरो छाँउछ ।)*

# अंश २

## दृश्य-६

समय : दिउँसो

स्थान : घर

पात्रहरु : फेरीवाल, जैसिंह, उजेली ।

*(जैसिंह काम गरिरहेका देखिन्छन् । उजेली पनि त्यही काम गर्दैछिन्*
*एउटा अधबैंसे व्यक्ति आउँछ ।)*

व्यक्ति : जय गोरख बाबा ! आयो फेरीवाला ! होशियार भइ बस्नु । रोग व्याध
समय छ, समय नराम्रो आइरहेको छ । छिमेक मुलुकमा डेसानले
दिइरहेको छ । होश नपुऱ्याए दुख देला ।

जैसिंह : के भन्छ फेरीवाला ?

फेरीवाला: सत्य भनिराछु, डढेलो जस्तै फैलिरहेको छ । बेलैमा सक्दो रोकथाम
सोच्नुपर्ला । जय गोरख बाबा ।

उजेली : खै हिजो पनि यस्तै करा भइरहेको थियो । के के हुन थालेको हो कुन्

फेरीवाल : समय काल राम्रो छैन, अनिकाल, महामारीले दुख दिने समय अझै आउँदै

उजेली : हिजो देउरालीमा अब मरिन्छ क्यारे भन्दै सुऱ्या र अरु केटाहरुले पो
रक्सी खाएछन् पैसा तिर्न नपुगे पछि पसलेले बेसरी गाली गरेछ, प
झगडा नै परेछ ।

फेरीवाल : यही हो हजुर । यस्तो बढ्दै जान्छ ।

जैसिंह : सामल देउ फेरीवालालाई ।

उजेली : आइराछु ।

*(उजेलीले सामल दिन्छिन् । फेरीवाला त्यहाबाट हिड्छ ।)*

# दृश्य-७

समय : दिउँसो

स्थान : घर

पात्रहरु : बाजे, जैसिंह, गाउले, केटा ।

*(घरमा बाजे, जैसिंह काम गरिरहेका देखिन्छन् / एक जना गाउँले आउँछन् र ढोग गर्छन् ।)*

बाजे : कान्छा कता हिडिस् बाबु ।

गाउँले : पर खेतमा गएको थिए फर्कदा हजुरहरुलाई भेटेर जाउँ भनेर ।

सिंहवीर : खवर के छ त दाई ?

गाउँले : यहाँ त सवै ठिकै छ मुखिया ! हिजो मेरो दिदी घरबाट आएको छिन् । उनले अति अचम्मको खबर सुनाइन् । उनको नन्दको गाउँमा एउटा डेसानले उत्पात् मच्चाइ रहेको छ रे । सुन्दा पनि बिश्वाश नै गर्न नसक्ने खालको ।

बाजे : हैन कस्तो डेसान फैलेछ कान्छा त्यस्तो, के हुन्छ रे ?

गाउँले : शुरुमा ज्वरो आउने, खान मन नलाग्ने त्यसपछि त्यो मान्छे त्यसै वर्वराउन थाल्ने, आफन्त नचिन्ने, परिवारलाई गालिं गर्ने, खान दियो मलाई विप ख्वाएर मार्न खोज्दैछस् भन्ने, कहिले चिथोर्ने र कुट्न खोज्ने । राम्रै कुरा भन्दा पनि उल्टा सुनेर निहु खोज्ने । घरमा एक आपसमा विश्वास नगर्ने ।

(जयसिंह गाउँलेलाई हेरेर हाँस्छन । उनको अनुहारमा अपत्यारिलो भा...
उत्पन्न हुन्छ ।)

जयसिंह : लक्षण सुन्दा त मानसिक रोग लागे जस्तो छ ।

गाउँले :होइन दाजु हजुरले विश्वास गर्न हुन्न होला । मैले साँचो बोलिरहे... छु ।

जयसिंह : खै के हो के हो ? हिजो पनि एउटा फेरीवाल बर्बराउदै थियो ।

बाजे : पहिला पनि त्यस्तै खालको रोग कहिले काहिँ आउँन्थ्यो तर उ... खोजेर सन्चो पारिन्थ्यो । कहिले काहि त ठूलो नोक्सान पनि पार्थ्... धनजनको क्षति पनि गर्थ्यो । सुन्दा त यो अलि अचम्मकै रहेछ । पहि... रोगको कारण पत्ता लगाउनु पर्‍यो अनि रोकथाम गर्न सकिएला ।

गाउँले : त्यै त सुन्दा अचम्म लाग्छ । भाई-भाई झगडा गर्ने मारपिट गर्ने ग... भाडभैलो छ रे । त्यहि माथि यो शिक्षा भन्छ, स्कूल, कलेज भन्छ यस... पनि राम्रो भन्दा नराम्रो नै गर्‍यो कि जस्तो लाग्छ मलाई त ।

जैसिंह : स्कूल, कलेज त कसरी नराम्रो हुन्छ र ? ज्ञान लिने ठाउँ, त्यसल... उपयोग पो नराम्रो सँग गर्नु भएन र । राम्रो नराम्रो त संसारमा जहि... पनि छ नि खाली हामीले कुन पट्टि अभ्यास गर्ने त्यसमा पो त ... पर्छ । हाम्रो अभ्यास राम्रो बानीको हुनुपर्‍यो । धेरैलाई हित हुने खाल... हुनु पर्‍यो ।

गाउँले : अनि बाबु महिलाहरु पनि त्यस्तै भा राछन् रे । बुहारीले सासुले भनेक... नमान्ने सासुले पनि बुहारीमाथि विश्वास नगर्ने । एउटा बच्चा भयो कि... घरमा नबस्ने बजारमा झरेर एउटा कोठामा बस्ने खै के भाको यस्तो...

बाजे : जमाना खै कस्तो आयो, केटाकेटी स्कूल, छोरीबुहारी आफ्नै सुर, कसले पशुपालन गर्ने कसले खेती गर्ने ?

जैसिंह : अब हामी पनि पहिलेकै तरिकाले सोचेर हुदैन । अवत प्रविधि गाउँमा पनि सहयोग गर्ने खालको आईसकेको छ। जैविक, व्यवसायिक, उत्पादन मुखी, बजारमुखी लगानी गरि खेती गर्नु जरुरी छ ।

गाउँले : त्यसको लागि त लगानी पनि चाहियो मुखिया ।

जयसिंह : हो एकजनाको मेहनत र लगानीले केही हुदैन तर सवै मिलेर सहकारी खेती, समूहमा गर्न सकिन्छ, नेपाल सरकार र निजी लगानीकर्ताहरुले यो अवधारणा नेपालमा ल्याई सकेका छन् ।

केटा : दाई पल्टनबाट हिजो आउनुभाको छ । आफ्नो साथीको पार्सल छाड्न आंधीपारी जानुभाछ पछि भेट्न आउनु हुन्छ रे ।

*(एक जना युवक हातमा कोसेली लिएर आउँछ र जयसिंहलाई दिन्छ)*

जयसिंह : (उपहार लिदै) ए बाबु बस एक छिन् ।

केटा : मेरो काम छ अहिले जान्छु । (केटा जान्छ )

गाउँले : खै मुखिया मत यस्तो कुरा बुझ्दिन गाउँमा बलियो बाङ्गा, युवक बस्न खोज्दैनन् अब त नावालक र बुढाबुढीको गाउँ भएको छ ।

जयसिंह : फेरिन्छ दाई अहिले हाम्रो साँच फेर्नु पर्छ त्यसपछि विस्तारै सवै फेरिन्छ ।

गाउँले : ल त मुखिया, काका म गएँ । डेसानवाट वच्न केहि रोकथाम त गर्नै पर्ला है ? झाकीदाईलाई भनेर केही क्षमा पूजा, रोकथाम पुजा आयोजना गर्ने हो की ?

*(गाउँले, उठेर बुढालाई सलाम गर्दै हिड्छन् । बुढा सोच्न थाल्छन्*
*सिंहवीर पनि सोच्न थाल्छन् । मञ्चमा अध्यारो हुन्छ संगीत बज्छ।)*

जन्मे पछि अन्त हुन्छ, समयसँगै परिवर्तन नियम हो यो संसारको चल्दै आए
रित ।

*(मञ्चको अर्को भागमा प्रकाश बल्छ, सुऱ्या आउँछ,)*

सुऱ्या : बाजे ! कता हुनु हुन्छ ?

बाजे *(स्वर मात्र)*: को हँ ?

सुऱ्या : म हो बाजे ।

बाजे : को म ?

सुऱ्या : सुऱ्या के बाजे ।

*(बाजे मञ्चमा आउँछन्)*

बाजे : किन ?

सुऱ्या : एकताल बाघ चाल खेलौंन बाजे ।

बाजे : हाऽऽऽ यो सुऱ्या पनि बेला न कुबेला के को बाघचाल भन्छ ।

सुऱ्या : एकताल खेलौं न बाजे । हिजो हजुरले मलाइ जिते देखि मलाइ निन्द्रा परेको छैन ।

बाजे : एकोहोरो छ मोरो, ल आइज त ।

*(सुऱ्याले बाघचालको सामान राख्न थाल्छ र खेल्न थाल्छन्।)*

बाजे : *(एउटा बाखा राख्दै)* ल सुऱ्या तेरो बाघ थुनियो ।

सुऱ्या : लाऽऽऽ म त खत्तम ! *(टाउकोमा हात राख्छ)*

बाजे : *(एउटा बाखा झिक्दै)* ल तलाइ एक मौका !

सुन्या : *(खुसी हुन्छ)* अब त म जितिहाल्छु नि !

बाजे : *(अर्को बाखा राख्दै)* ल जित् !

सुन्या : हँ ! लाऽऽऽ म त फेरी खत्तम !

बाजे : पहिला नै सोच्नपर्छ नी लाटा चाल कहा पुग्छ भनेर । पछि त जति सुधार्छु भन्दा पनि गाह्रो पर्छ ।

सुन्या : ल आउनुहोस् अर्को खेल खेलौ । यो खेल त मैले पक्कै जित्छु ।

बाजे : ल ल आइज जित न त !

*(त्यहि बेला हैमति आत्तिदै आउछिन् । उनको अनुहारले उनी निकै दुखी र भयभित छिन् भन्ने देखाउछ ।)*

बाजे : नानी के भयो ? किन यसरी आत्तिएकी ? सन्चै त छौ ?

हैमति : खै के सन्चै भन्ने बाजे ! मलाइ त चिन्ताले पो थाल खाँउ कि भात खाँउ बनाएको छ ।

बाजे : के भयो र नानी ?

हैमति : मेरो त माइतिमा डेसानले भाइ बुहारी र भदैहरुलाइ पनि खतम पार्‍यो भन्छन् म त के गरौ ?

बाजे : कसले भन्यो ?

हैमति : त्यस्तै भन्छन् । हल्ला त्यस्तै छ ।

बाजे : हल्ला को पछाडी लागेर हुदैन ।

हैमति : मलाइ त डर लागिरहेको छ बाजे ! आफूले छोरो गुमाउन परे पनि अरुले त्यस्तो दिन देख्न नपरोस् ।

वाजे : सधैंभरी त्यस्तो के होला र नानी ! वनाउनेले पनि त सोच्लान् नि।

सुन्या : होइन होला भाउजु पीर नगर्नोस् ।

हैमति : खै हो नै भन्छन् । फेरी यो गाउँ तिर पनि सदैं आउने त होला नि।

सुन्या : आउदैन हाम्रो गाउमा त ! हामीले कसको के बिगारेको छ र हामीलाइ बिगार गर्ने ।

हैमति : कहिले काही नखाएको बिख पनि लाग्छ र पो त !

बाजे : चिन्ता नगर नानी परे पछि टर्छ । समस्या परिहाले समाधान पनि निकालौला ।

सुन्या : हो भाउजु बेला बेलामा समस्याहरु आउँदा समाधान गरेकै छौ के फेरी आपत् परे एक भएर जुटौला । जाउँ अब ।

*(मन्चमा अध्याँरो छाउदै जान्छ । गीत सुनिन्छ ।)*

एकतामा बल छ, असँभव भन्ने छैन........

# अंश ३

## दृश्य-८

समय : बिहान

स्थान : ठूलो रुख

पात्रहरु : गाउका सबैजना

*(रुखमुनी आफ्नो विधि अनुसार फलफूल, पानी, अन्न आदि चढाईरहेका छन् । त्यसपछि उनी ध्यान गर्छन् र एकछिनमा भट्याउन थाल्छन् । गाउँलेहरु एक-एक चिज ल्याएर चढाउछन् ।)*

पूजारी : गाउँका सबै पितृ, सिमेभूमे, देवताहरु, भञ्ज्याङ-देउराली, कोट, जल थल, आकाश देवताहरु ! सबैलाई हाम्रो प्रणाम छ । हामी अज्ञानी मनुष्यहरु तिमीहरु सबैको श्रद्धा र पूजा गर्छौं गाउँमा सुख, शान्ति, सम्बृद्धि कायम गर भूतप्रेत पिचाश, बतास र नराम्रा चिजहरुदेखि हामीलाई बचाऊ ।

सुनिन्छ ठाउंठाउंमा ज्यानमारा डेसानले दु:ख दिईरहेको छ रे त्यस्तो डेसान देखि हामीलाई बचाऊ *(एक छिन आँखा चिम्ली शान्त हुन्छ)*

सुन गाँउलेहरु पानीको स्रोत सफा गर पानीको स्रोत वरिपरि कहिले फोहोर दिशापिशाव नगर यही कुरा सबैलाई सिकाउ, धुम्रपान मद्यपान नगर, जीवहत्या नगर, मौसमी सागसब्जी फलफूल खानामा नछुटाउ, रिस नगर, सधै प्रशन्न रहने गर, अरुको सक्दो सेवा र सहयोग गर ।

*(प्रतिकात्मक नाच गर्छन । नाँचको अन्त्यमा प्रसाद बाड्ने बेलामा दुई जना गाउँलेहरु आउँछन् र कुराकानी हुन थाल्छ ।)*

एकजना गाउँले: सबैलाई प्रणाम छ । हामी त यो गाउँमा शरण माग्न आएका । *(बोल्न सक्दैन)*

शेरजंग *(छक्क पर्दै)* : कुरा बुझिएन नी, के भन्न खोज्नुभएको ।

दोस्रो गाउँले : सत्यनाश भयो हजुर ! ज्यानमारा डेसानले सबै लग्यो हजुर गतिलो केही छाडेन बाँचेका जति पनि । *(ऊ रुन थाल्छ)*

पहिलो गाउँले : हामी त गोठमा र गाउँबाहिर काममा गएका थियौ । कस्तो खालको डेसान लागेछ । मान्छेलाई बौलाहा जस्तो बनाई दिने र अन्त्य नै गरिदिने । हाम्रा त कोही बाँकी रहेनन् भन्ने बाटोमा नै सुन्यौ त्यसपछि त हामी त्यो गाउँ पस्ने आँटै गरेनौं । जाने गए पनि सँगै जान नसकिदो रहेछ । *(ऊ पनि बोल्न सक्दैन)*

*(जयसिंहले यताउता गाउँलेलाई हेर्छन् । गाउँलेहरु पनि बोल्न केहि सक्दैनन् केवल मुखामुख गर्छन फेरी ति दुई जनालाई पालैपालो हेर्छन् ।)*

जयसिंह : बडो अप्ठयारो कुरा गर्नुभयो *(एकछिन गम खान्छन्)* अहिलेलाई एउटै घरमा बस्न पनि अप्ठयारै छ । एकजना पाहुना बस्नु होला त्यसो त हजुरको घरमा पनि यसो खबर बुझन पाए राम्रो अवस्था भए त फर्कन सकि हाल्नु हुन्छ नी ।

पहिलो व्यक्ति: त्यस्तो अलच्छिन ठाउँ त म फर्कन्न हजुर बरु म यही दुःख मेहनत गरौला ।

जयसिंह : ठिक छ केही समयको लागि हामी शरण दिन्छौं । शरण परेकालाई मरण नगर्नु भन्ने हाम्रो चलिआएको मान्यता हो ।

*(गाउँले तर्फ फर्कँदै)* हजुरहरुले के भन्नु छ ?

क-कसले पाहुनालाई शरण दिनु हुन्छ त ?

*(गाउँलेहरु मुखामुख गर्छन् मञ्चमा बत्ति निभ्दै जान्छ गीत सुनिन्छ । )*

**बाँच र बचाऊ, शरणमा परेकालाई मरण गर्नुहुन्न....**

## दृश्य-९

समय : मध्यरात

स्थान : घर

पात्रहरु : जयसिँह, बीरमान, बाजे, बजै, नामखान, चन्द्रा, उजेली

*(एकजना गाउँले विरमानकोमा आत्तिदै घरमा आउँछन् ।)*

बीरमान *(जोडले अत्तालिदैं)* : मुखिया दाई ! ए मुखिया दाई !
उठ्नुस् त उठ्नुस् ! मुखिया दाई !
लौन छिटो उठ्नुस् ।

*(भित्रबाट ढोका खोलेर जयसिंह आखा मिच्दै निन्द्रामा बाहिर आ*
*हेर्छन् त विरमान चिच्याई रहेका छन् ।)*

जयसिंह : हैन के भयो बीरमान यस्तो मध्य रातमा ।

बीरमान : बरवाद भयो मुखिया दाइ बरवाद भो ।

*(त्यति बेला सम्ममा बाजे, बजै, नामखान, चन्द्रा, उजेली पनि*
*आउँछन् ।)*

वाजे : के भयो ठूला ?

वीरमान: मैले शरण दिएको मान्छे त बौलाएर हामीसँग झगडा गरेर हातमा खुकुरी लिएर हामीलाई नै मार्छु भन्दै उफ्रयो । साँहिलीलाई आक्रमण गरेर झण्डै माऱ्यो मैले पछाडीबाट चिरपटले दिए पछि ढल्यो । फेरी उठेर आक्रमण गर्न खोज्दै थियो बडो मुश्किलले त्यसलाई हात खुट्टा बाधेर लडाएर राखेको छु । मलाई सहयोग चाहियो लौन जाऔं ।

जयसिंह : के भयो त त्यस्तो ?

*(दुईजना जान्छन् बाँकीले उनीहरु गएको हेर्छन् । बाजे र अरु घर यताउता हेरेर सुत्न भित्र पस्छन् ।)*

गीत : डेसान, डेसान कहिले काँही पार्छ यसले सखाप ।
छैन कोही सुरक्षित पार्छ यसले सखाप ॥

# दृश्य-१०

समय : दिउसो

स्थान : चौपारी

पात्रहरु : सबैजना

*(दलसुर, हैमती र अरु केही व्यक्तिहरु दोड्दै मञ्चमा आउँछन् । उनीहरु अत्यन्त आत्तिएका छन् ।)*

दलसुर :अच्छा हाम्रै गाउँमा पनि डेसानले धेरै ठाउँमा असर गरिसकेको छ । अब सबैले आफु बच्ने उपाय तिर सोच्न पर्‍यो । आफ्नो घरमा रक्षा गर्ने चिजहरु र जडिबुटिहरु के के छन् आफ्नो साथमा राखौ । चनाखो बसौ । सुरक्षा र स्वास्थ्यको लागि प्रार्थना गरौ ।

यो कस्तो दुश्मन पर्‍यो भने न गोलीले मार्न मिल्न ने न समातेर बाँध्न मिल्ने । हे विधाता यो कस्तो समय देख्न पर्‍यो ।

*(अरु मान्छेहरु मुखामुख गर्छन् केही बोल्न सक्दैनन् ।)*

हैमति : भन्दा भन्दै यस्तो भयो । मैले त केहि गरौ भनेर उहिल्यै भनेको हो । हे भगवान् !

एकजना मान्छे : लौन कोही गएर पूजारी बा बोलाउनु पर्‍यो । उनले केहि गर्लान् ।

*(सन्तवीर, ड़िलसरा र केही व्यक्तिहरु पनि दोड्दै आउँछन् ।)*

डिलसरा : लौन यिनीहरु त्यहाँ रैछन् । तिमीहरुसँग केही उपाय छ की ? कसो गर्ने हो के गर्ने हो ? डेसानले त खतमै पार्‍यो ।

*(सबैजना मुखामुख गर्छन् तर बोल्न सक्दैनन् ।)*

हैमति : हामी त्यहि त सल्लाह गर्दै थियौ अब के गर्ने भनेर ।

सबैजना गुनगुन गर्न थाल्छन् । एक-आपसमा बाहिर स्पष्ट बुझिदैन उनीहरु आत्तिएका छन् भन्ने प्रष्ट बुझिन्छ । त्यसभन्दा बढी केही बुझिदैन ।

*(बीरमान, सुर्‍या र अरु पनि मन्चमा आइपुग्छन् ।)*

बीरमान : शत्रु हो यो हाम्रो यो सँग डराएर हुदैन होशियारीपुर्वक यसलाइ खतम पार्नुपर्छ ।

दलसुर : तर कसरी उपाय पनि त हुनुपर्‍यो ।

सुर्‍या : यसलाइ जसरी भए पनि ठिक पार्नुपर्छ ।

त्यतिकैमा वीरमानले पिडाको अनुभूति गर्छ.। ढाङमा/ढाङ समाउने प्रयासमा उसको शरीर, अनुहार अनौठोसँग चल्न थाल्छ । उसको पिडा ढाङ हुदै पेट, छाती, टाउको, खुट्टा तर्फ बढ्छ, सबैजना उसलाई अनौठो मानेर हेर्छन सुर्‍या उसलाई समाउन जान्छ । वीरमान अलिक कम चल्दै भूईमा शिथिल हुदै जान्छ र भूईमा सुत्छ । सुरया लाइ पनि दुखाइले आक्रमण गर्छ र शरीर समाउन थाल्छ । एर्कछिन पछि सन्तवीरलाई पनि

पेटमा ठूलो पिडा भएको जस्तो गरि पेट समाउँछ, फेरी ढाड, अनि टाउँको, अनि पुठो आदि । सबैजना छक्क परी हेर्छन् । पूजारी र जयसिंह पनि त्यसैबेला उताबाट आउँछन् पूजारीले आफ्नो तन्त्रमन्त्र र फुकफाक शुरु गर्छन तर कसैको पनि ध्यान उनी तिर हुदैन बरु बेला-बेलामा ज्यान समाउछन् तर त्यो दुखाई जस्तो चाल वीरमान र सन्तवीरको जस्तो लगातार भने हुदैन घरीघरी मात्र शरीर घुमाउछन् भने सबैजना एक आपसमा हेर्न, चासो दिन छाडेर एक-एक कुनामा फर्कन्छन् । केवल जयसिंह मात्र घरिघरि शरीर हल्लाउदै भएपनि मानिसहरुलाई हेर्छन वा हेर्ने प्रयास गर्छन् र केही भन्न खोजे जस्तो गर्छन् तर वाक्य निस्कदैन। हातको हावभावले बोलाउने प्रयास गर्छन् कसैले हेर्दैनन् र बोली वाक्य निकाल्ने प्रयास गर्छन तर बोली नै निस्कदैन । पूजारी वाले समेत घरीघरी शरीर हल्लाउदै आफ्नो काम जारी राख्छन् तर उनको पनि स्वर निस्कदैन केवल ओठ चल्छन्, हातको हावभाव चल्छ तर कसैले उनको हावभाव र आदेश पनि हेर्दैनन्, सुन्दैनन् सबैजना आफ्नै धुनमा ट्वाल्ल पर्छन् घरीघरी शरीर समाउँछन् धेरै जस्तो गरी । केहीले अर्को व्यक्ति देखे फरक्क अर्कोतिर अनुहार फर्काउछ । पूजारी बाले आफ्नो प्रयास जारी नै राखेको बेला उनलाइ पनि दुखाईले आक्रमण गर्छ, उनी पनि दुखाइले शरिर समाउन पुग्छन् । सबैजना पिडाले छटपटाउन थाल्छन् ।

*(बिस्तारै मञ्चमा अँध्यारो छाउदै जान्छ ।)*

समाप्त ।

### प्रोप्रर्टीहरु:

बाघचाल खेल्ने ढुङ्गाको पाटी र गोटीहरु

मादल

पूजा गर्ने सामानहरु

### भेषभुषाहरु:

मारुनीले लगाउने कपडाहरु

साधारण घरमा लगाउने कपडाहरु

परम्परागत भेषभूषाहरु

### सेट:

घर

चौपारी

रुख

नोट : समय, स्थान, परिस्थिति, आवश्यकता र बजेट अनुसार सेट बनाउन र भेषभुषा लगाउन सकिने छ ।

## लेखक परिचय

### युवराज मास्की राना मगर

जन्मस्थान : बानेथोक देउराली - ६ स्याङ्गजा

हाल : खुमलटार - १५ ललितपुर

रचनाहरु :

**पुस्तक र पत्रपत्रिकाहरु:**

| | |
|---|---|
| **मोई** | नाटक - (२०५०) |
| **स्वतन्त्रता सेनानी एकदेव आले मगर** | पुस्तिका - (२०६७) |
| **गीत र संगीत** | बालगीतहरु, अन्य गीत तथा संगीतहरु |
| **सम्पादन** | गोराक (२०४७, बुटवल) |
| | रोश (२०५०, किर्तीपुर) |
| | लाफा (२०५०-२०५७, काठमाण्डौं |
| | मगर अंग्रेजी खस शब्दकोष (२०६५) |
| | बानेथोक देउराली स्मारिका (२०६६) |
| | आदिवासी जनजाति चलचित्र दर्पण (२०६८) |

**चलचित्रहरु:**

| | |
|---|---|
| **लंघन** (पटकथा लेखन/निर्देशन) | मगर भाषाको प्रथम चलचित्र (२०५१) |
| **पात** (निर्देशन) | गुरुङ्ग भाषाको प्रथम चलचित्र (२०५२) |
| **वृत्तचित्रहरु** (लेखन निर्देशन) | नेपालमा सामुदायिक प्रहरी (२०५७) |
| | अग्रगमनको यात्रामा मगरहरु (२०६५) |
| | यऊनाट (२०६८) |